# राष्ट्रपिता बडामहाराजा श्री ५ पृथ्वीनारायण शाहको

# दिव्य- उपदेश

## उपदेशको मूल पाठ

स्वस्ति श्रीगणेशाय नमः ॥ श्रीकालिका सहा। श्री ३ सिव गोरषनाथ सहाः ॥ श्री ५ प्रिथिनारायण शाहाः ॥ ॥

श्रीश्रीश्री ५ बुढा महाराजाले तिन सहर नेपाल र हिंडुपतिको राज लियापछि पछिल्ला पटक् नुहाकोटमा पाउलाग्नुभयामा गुरू प्रोहित थरघर भैयाद भारदार र आफ्ना ददा सुरथसि राना सबैका बुढापाकाछेउ हुकुम भयाका कुरा.

बुढा मरै भाषा सरै भनि भन्छन्. तिमिहरू सबैछेउ सुनाइ गयाको भया तम्रा सन्तानलाई सुनाउला र तम्रा सन्तानले हाम्रा सन्तानलाई सुनाउन र यो राजे थामि षानन्।

॥ उप्रान्तः ॥ हाम्रा मुमाहरू तिन हुन्. हामी तिन षोपि का पांच पांडुवा को अवतार भयाका थियुं. मेरो विवाहा मकवानपुर मा भयाको थियो. डोला सुम्पेको थियन. र...डोला पनि लैयाउ. नेपाल पनि देषि आउ भनि मकवानपुर गँञु र पुग्यपछि दिकवन्दनसेनलाइ यवटा कुराको करेउलि लिएर भने. यकदन्ता हाति र नवलाषि हिराको हार दिन्छौं भने डोला पनि लैजाला. दिन्न भन्या काढि तरवारसित पनि लैजांला भनि हाक पारि. नेपाले राजा ले चिन्नन् र पक्रनन् भनि स्याषु वडि रापतिका तिरैतिर. भानु जैसि कुलानन्द जैसि अरू थरघर पनि साथैमा थिया.

चन्डागिरिमा आइपुग्यापछि नेपाल कुन् हो भनि सुध्याँञा र त्यो भादगाउ हो. त्यो पाटन् हो. त्यो काठमाडौ हो. भनि देषा (या) र. मेरो मनमा इ तिन सहरको राजा हुन पाया ता हुँदो हो भन्ने यस्तो मनमा परिरहेथ्यो.

उसै वेलामा उ दुवै जैसिले भने. हजुरको मनकान्छ्या अविलाष् पुग्ला महाराजा भन्या र मलाई आसर्जे लाग्यो र मेरा पेटका कुरा कसो गरि जानेउ र तेस्व भनेउ र भनि मैले भन्दा. जसै नेपालमा नजर दिनुभयोथ्यो उसैवेला मोचमा बाहुलि डिदा मनमा

नेपालको राजा हुन पाया ता हुदो हो भन्या जस्तो परेछ भनि विन्ति हजूरमा गऱ्याकै हो भने र यो कुरा पुग्ला (त) भनि मैले भन्दा हजूरले गौ ब्रह्मान अतित फकिर देउदेवताको मानिता बहुतै राषनु भयाको छ. हाम्रा हातमा पनि सरसोतिको बर्दान छ. हजूरलाई नेपालको राज (अ) वस्य हुनेछ. भने र. थांकोट्को ठूलो भन्ज्यान् काटि रातदिन गरि कल्लहारिघाट तरि धादिंन् उक्लेउ र. चेप्याको षावा लिगलिगको आड गरि राषेका मेरा तिन बिर छन्. तिनलाई बोलाहाटको रुका लेषन जैसि भन्दा. तिनको नाम के हो भनि सुध्याया र रणजित् बस्न्यात्. मानसिं रोकाहा विरभद्र पाठक् मैधि मा रात दिन गरि आइपुक भनि लेषी पठाँञा आइपुगे र तिनछेउ यकान्त गऱ्यां (र) भने-

दिक्बन्द सेन सित हाक दि आञाँ. नेपाल पनि देषि आञाँ हान्नाको मनसुवा पनि राषी आञाँ. तिमिहरू क्या भन्छौ भनि मैले भन्दा. हान्नुहवस् महाराजा भनेर सल्लाहा दिया र मैले भने. म जसै अर्काको छत्रभङ्ग गर्न जांछु. मेरो छत्रभङ्ग गर्न अर्को आयो भन्या कसो होला भनि मैले भन्दा हजूरका हातिहउवा ई बाइस् चौबिसि आयो भन्या चेप्यामा रगतको नदि बहाउला महाराजा भन्या र यकान्तबाट उठि गोर्षा गयउ र पुगेपछि मामाज्यू पनि निलकण्ठ पसुपतिको दर्सनलाई देउघाटको बाटो गरि जानुभयाको रहेछ. निलकण्ठ पसुपतिको दर्सन भयापछि. श्रीगोरषनाथको दर्सनलाई गोर्षामा आउनुभयो र दर्सन भयापछि मसित भेट भयो र मैले भन्या. मामाज्यू मकुवानपुर पनि पुगीआँञां. नेपाल पनि देषि आँञां. हान्नाकोमनसुवा पनि राषि आँञां. कति कुराले मेरो काज फत्ये होला. अर्ति बक्सनुभया हुँदो हो भनि मैले भन्दा मलाई पनि पञ्चरात्रीमा द्रिष्टान्त भयो. हामीले देषता पाच पाण्डुवाको अवतार भया जस्तो लाग्दछ. कुरूक्षेत्रको मेला नभै नेपाल फुट्ने छैन.

लमजुन् भन्याको गरुड हो. गोर्षा भन्याको सरप हो. नेपाल भन्याको भ्यागुतो हो. अघी गरुडको आषा छलनु. तब सर्पले भ्यागुतो षान पाउछ. मेरा साथमा चार जातका सिपाहि छन्. इन्मा कस्को सबार गऱ्या चाडो काज फत्य होला भनि सोद्धा के के जात छन् भनि सोधनुभयो बाहुन् षस मगर ठकुरि इनमा कस्को सवार गऱ्या चाडो काज फत्य होला भनि सोद्धा. बाहुन् को सवार भन्याको बयेल हो. पातक् लाग्छ. ठकुरिको सवार भन्याको सिंघ हो पछाडि दगा हुन्छ. मग्रको सवार भन्याको टागन् घोडा हो।

ढिलो हुन्छ. षसको सवार भन्याको ताजि तुर्कि घोडा हो. षसको सवारगऱ्या चाडो होला भन्या जस्तो लाग्छ भनि अरु ढेरै कुराको अर्ति दि जानुभयोथ्यो.

उनै अर्ति लिँञा र लम्जुंग्या राजा रिपुमर्दन साहसित भेट गर्न भनि गयां, र चेपे घाट मा भेट भयो र घाहा घरेसका बात गर्दा जौना कुराले घाहा बाधुला भंने जढ कुरो मेरा पेटमा थियो सोहि जढ कुरो कालु पाडेले गऱ्यो र घाहा बलियो बस्यो र मलाई आसर्जे लाग्यो र. तर मलाई ता रिझायो. दुनिँञा जसदेषी राजि रहन्छन् उसैलाई कजाई दिनु भन्ने सास्त्रमा पनि कहेको छ. दुनिँञाँमा बुझिहेरुं भनि बुझि हेर्दा दुनिञाँबाट पनि कालु पांडेको चाहा रहेछ र कालु पांडेलाई कजाई दिनुभया हामी दुनिँञादारमा छाहारि रहदो हो भन्या सल्लाहा दिया र. अब बाइसि चौबिसिले क्या भन्छन् भनि बुझनु हुंदा.बाईसि चौबिसिबाट पनि कालु पाडेकै चाहा रहेछ र कालु पाडेलाई कजाञि भया घाहा घराइस् बलियो राषन्यैछ भन्ने सल्लाह दिया. मेरो मनमा ता बिराज बषेतिलाइ कजाई दिन आटेको थियो. तर ज्याधा बुद्धी कालु पांडेकै ठहऱ्यो र कालु पांडेलाइ कजाञि भयाको हो.

अव पांडे र बस्न्यात्को जुग बाधिदिंछु. तेरि छोरि सिवराम बस्न्यात्को छोरो केहेसिँह बस्न्यात्लाई देउ भनि मागि बिहे गरिदिंञां र पांडे बस्न्यात्को जुग बाधि पाडेको ढाल् बस्न्यात्को तरवार गरि नेपालमा चढाइ गऱ्याको हो.

उप्रान्त ॥ रणजित बस्न्यात् मानसिं रोकाहा विरभद्र पाठक् इनलाई गौटान्को बिराइ लिग्लीग्को आडमा राषि म पनि सल्लान्कोट कि देवी साछ्यात् छन् भनि भन्दछन. म पनि सायेत गरि जान्छु. भनि विदा गराया र सायेत गरि म पनि गँञु र बारिमा थर्पु पऱ्यो र सल्ल्यानिको थरघर बराहा उमराउहरूसित सुधाँञा.

माईको दर्सन् गर्न हुन्छ की भन्दा भित्र दर्सण पुजाहारि टहलुवालाई मात्रै भित्र दर्सन गर्नु हुन्छ. जो हुकुम् भन्या र ढोकामा ता हुन्छ कि भन्दा ढोकामा ता हुन्छ. भन्या र साज बिह्यान ढोकासम्म जाई पाठ पुजा जप् दर्सन गर्थ्या र एक दिनका रातमा सोपना भयो र दुई हातमा दुई षड्ग लियाकी सात आठ वर्षकी कन्न्या कुसुमे पछिउराको घुगुटि पारि मछेउ आइन् र मैले सोध्या तिमी कस्कि छोरी हौ भनि मैले भन्दा पुजाहारि रानाकि छोरि हुँ भनिन् र उ दुवै षड्ग मेरा हातमा दिइन् र आरसि

प्रर्मानको लाल टल्बल् गर्थ्यो षोकीलाबाट झिकी मेरा मुखसम्ममा ल्याई यो पनि निल् भनिन् र तम्रो मनकान्छ्या पुऱ्याइदियाको छ. म पनि केही माग्छु. थपि जाउ भनि. जसै दुई पाईला गैथिन्. उसै बेलामा म पनि बिम्ज्यौ र भानु जैसि. कुलानन्द जैसि. पुजाहारि रानालाई डाक्यां र सुध्यायां. जैसिले पनि पुजाहारिले पनि ति माई हुन् दर्सन पाउनु भयछ. भने र उसै बेलामा धुप् दिप् धजा नैबेदे नित्य पुजालाई सात राग्गा सातै बोका थपि बोर्ला घाटको आम्दानी र घाटै छेउको टार माईलाई संकल्प गरि दिँञा र उसै घरिको सायत गरि रात दिन गरि सरासरी आयां र सिमल्चौर चौतारामा थर्पु हालि बस्याको थिँञा.

दावा भन्या. नुहाकोट् को बहना भन्या षिंच्यात् को कुलो काटि षेत बिराउना को गरि राषाथ्यां. वेत्रावतिका वेनि इन्द्रायेनिका थानमा डुंगा तरि जप पाठलाई जांथ्या. ध्यान भन्न्या सल्ल्यान्कोट्कि देवीको र इन्द्रायनि भैरवीको गर्थ्या. महामंण्डल भनेको नुहाकोटको सवता रहेछ. महामंण्डलमा ग्यामि राना थियो. तं हाम्रा घरको ग्यामि होस्. महामण्डल छोडिदे. मछेउ आईज. भनी पठाँञां र हुना ता मं हजुरैको हुँ. तर जयप्रगास मल्लको नुन षाईहाल्यां मरिमेट्न्याछु भनि हाक पारि पठायो र.

येक दिन कचहरि मा बस्याको थिँञां. तान्रा लागेछ र तान्रैमा ता इन्द्रायनिका थानमा बस्याको रहेछु. आजका साता दिनमा ठुलो सायेत छ. तेसै दिनको सायतले नुहाकोट साध्ये हुन्याछ. भन्याको सुन्या र पात्रो हेरन जैसि भन्यां र पात्रो हेऱ्या र आजका साता दिन विहाउडो सनिश्चर वार ठुलो सायत रहेछ भनि विन्ति गऱ्या  र उहि सायतमा महामण्डलमा उक्लेउ र तरबरार पऱ्यो र हाम्रा नुन्का सेषले झुकाई दिने पंथ वाऱ्है वर्षमा मेरा भाई दलमर्दन साहले जेठि तरबार रानाको थापलामा हान्यो र नुहाकोट साधे गरि बढाई गरेउ र ककनि सिवपुरि मा ठाना हालि मुर्चा लाई राषथेउ.

मलाई प्रसुराम थापा ले नेपाल हान्न आउ भनि हात दिई राषाथ्यो. आफ्ना भाईलाई लाषबिसि पुऱ्याउनु बाइसि चौविसि उठाई पछाडी हान्नु भनि पठायछ र मैले थाहा पाँञां र कहा पुग्याको छ भनि सुधाँञा र पोषाराको हटिया मा डेरा गरि बस्याको छ भनि सुन्या र तेसलाई बैठाई आउन … चुरेघाटि मा षुपै काटिन्या छ. पाच सात

पुस्तालाई षजाना पनि मिल्नेछ. श्री गंगाजिको साध पनि लाग्नैछ. लडाईमा पुकेन भन्या लोलोपोतो अनेक कलछल गरिकन पनि. ...

यो नेपालको तषत किल्ला हो. यो किल्ला पायो भन्या चारै बादसाह लाई वह्नाला लाउनैछ. (यो) इस्वरले रचना गर्‍याको किल्ला रहेछ. स्वधनुपर्ने रहेनछ. सिवपुरि १, फुल्चोक् १, चण्डागिरि ३, महादेउपोषरि ४, पालु ५, दाप्चा ६, काहुल्या ७, ईनमा पनि किला पकी बनाउनु. ...

... किल्लापिछे तोप लम्छट् गरि राषीदिनु र जति भन्ज्यां ई छन् भन्ज्यांपीछे यक यक फलामे ढोका बनाई ढोकापिछे यक यक तोप लम्छट् गरि राषीदिनु र पपांच सिपाहि राषीदिनु र यस्व भयापछि चेवा गर्न्या. चर्चा भागन्या (भागिन्या). नास्न्या. ढुकुवा. फसादि.षुनि यस्ताहरूको पनि केही चल्नेछैन. चारै वादसाही चढाइँ गरि आफ्नो भन्या पनि कसैको केही चल्न्या रहेनछ.

उप्रान्त राजा राम शाह ले बाध्याको थिति पनि हेरिसके. राजा जयेस्थितिमल् ले बाध्याको थिति पनि हेरिसकें. राजा महिन्द्रमल्ल ले बाध्याको थिती पनि हेरिसकें. इस्वर ले दियो भन्या म पनि यस्ता बन्देज को बाह्र हजारको थिति बांधि जाला भन्या अवीलाषा थियो.

... को सकौला भनि सल्लाह गर्दा कसैले पनि ठहराउन सकेन र मैले भन्या. झागल गुरूं सकला भनि डाकि अह्राई मेरो कंमरको कोताषान् दियां र गयो र पुगि गाइनेको भेष गरि हातमा बल्छी को टागो लि काषिमा सारंगी च्यापि २।४ धार्निको सहर लैगी अरु उसका लस्कर हरू भात षान्या बषत्मा अवसर हेरि बैठाइ आयो र पछाडी सुद्ध गरि नेपाल षोल्याई पुरुब पछिमका दुनिँञा हात गरि नेपाल लियाथ्यां ॥

उप्रान्त ॥ यो राजे दुई ढुंङ्गाको तरुल जस्तो रहेछ. चीन बादशाह सित ठुलो घाहा राषनु. दषिनको समुन्द्रका बादशाह सित घाहा ता राषनु. तर त्यो महाचतुर छ. हिन्दुस्थाना दबाई राषेछ. सरजिमी मा परिरहेछ हिन्दुस्थाना जाग्यो भन्या कठिन पर्ला भनि किल्ला षोजन आउन्या छ. सन्धीसर्पन् हेरि गढि तुल्याई राषनु र रस्ता रस्तामा भाजा हालि राष्नु र यक दिन त्यो बल आउन्या छ. जाइ कटक् नगर्नु. झिकी कटक् गर्नु. र ...

मुलुकमा ईजारा पनि नदिनु. सर्षारबाट अमानित् राषि सर्षारिया तहसिल राषी सालवसाल् को कचा लिनु. क्या चुनी सिपाई भया. क्या भैभारदार भया. इनलाई दवलथ कमाउन नदिनु. आदमी हेरि हुर्मत् मात्रै राषीदिनु. क्याम भनौला. दवलथ भयाकाले तरवारमा पसि मर्न मार्न सकैनन् र हरिप को चमक् हुन्छ. सिपाहि भैभारदारले स्वष गरेनन् भन्या चारै षुट (मा) मेरो तरवार बज्नैछ. स्वषमा पसो भन्या.

मेरा साना दुषले आर्ज्याको मुलुक होइन. सबै जात को फुलबारि हो. सबैलाई चेतना भया. यो फुलबारिको छोटा बडा चारै जात छत्तिसै बर्न ले (यसलाई सम्भार गर्नु पर्दछ)

यो असिल हिन्दुस्थाना हो. आफ्ना कुलाधर्म नछोड्नु. स्वामित् को नुन् को उधार गर्नु. कालुकबर्दारका सन्तानलाई कवर्दारी नछुटाउनु. दषिन को घाहा सिवराम बस्न्यात्का सन्तानलाई नछुटाउनु. भोट को घाहा कालु पांडेका सन्तानलाई नछटाउनु.

पांडे बस्न्यात् पंथ भैयाद मग्र लाई मारातप् दिदा आलोपालो गरि षान दिनु. ई मेरा नुन् गुन् का स्वझा सेवक हुन्. ईनीहरूको जीव जान्या बिराम गर्‍याको भया पनि आफुले गमार्नु. बरू मारातप् दिएर लडाँउीमा झोसिदिनु र जिव जोगाई आयो भन्या बढिया भयो. मरि गयो भन्या आफुले मार्नु (भन्दा) अर्कैबाट मारिदियाको बढिया हुन्छ. तब राजाले सेवकलाई घरमा नमार्नु.

पुरूब पछिमको रस्ता बन्ध गरि नेपालको रस्ता चलाई दिंउंला, आफ्ना आफना जात विसेषको कर्म गर्नु (भन्ने) बन्देज गरिजांला (भन्ने पनि मेरो मनमा अभिलाषा रहेको थियो)

यो तिन सहर भन्याको चिस्व ढुंगो रहेछ. षेलषाल मात्र ठुलो रहेछ. कुप को पानि षन्याछेउ बुधि पनी हुंदैन. सुरो पनि हुँदैन. षेलषाल मात्रै हंदो रहेछ. मेरो मनसुवा ता दहचोक्मा दरबार बनाउला र चारै दिसा थरघर को. गुरु प्रोहित. भैयाद. भरादार. मिर उमराउ को घर बनाई छुट्टा दरबार बनाउला र ई तिन सहरमा ता दरबारबाट स्वषसयल लाई मात्रै जाला भंन्या यस्तो अविलाषा थीयो.

उप्रान्त ॥ देस का महाजन् लाई गोड प्रसाह देषी उभो आउन नदिनु. देशका महाजन्हरू हाम्रा मुलुकमा आया भन्या दुनिंजां कंगाल गरि छाड्दछन्. हामीले

च्यागापांगां लाई तिन सहर नेपाल र नौलाष् किरायत र हिन्दुपतिको राज आर्ज्यथ्येउ. देसका कपरा लगाउनालाई मह्वाई गरिदिनु. आफ्ना देसका कपरा बन्न जान्न्यालाई नमना देषाई सधाउनु र बन्न लाउनु र यस्व भया नगद देस जादैन.

आफ्ना देसको जिनीस् जरिबुटि देस लैजानु र नगद षैचनु. नगद षैचि राषनु र प्रजा मोटा भया दर्बार बलियो रहन्छ. राजाका भंडार भन्याका रैतानहरू हुन्.

लडाञीमा पनि हान्न्या र सष दिन्या ई दुवै बरोवर हुन्. जागिर दिदा वितलप् दिदा दुवैलाई बरोबर दिनु. मरयो भन्या उस्का छोरा षुडा हान्न्या नहुन्ज्याल मरवट दिनु. षुडा हान्न्या भयापछि जागिरमा उकालिदिनु र राजाले विवेक राषीदिया देसदेस का सिपाहि पनि आसा राषी आउन्छन् र यस्वभया तरवारिया सिपाहि हात लाग्छन्.

राजाका सार भन्याको सिपाहि र रैतिहरू हुन्. राजा चतुर भया सिपाहि र रैति हात हात गरि राष्नु र हुल्कुल हुन पांउदैन. सिपाहि भन्याको तिषारि राषनु. तिषारिराष्याका सिपाहि कसैका मलाजामा पस्तैनन् र आफ्नु काज फत्य हुन्छ ।

गुरुं मगर षान्ज्यादा भैयाद भारदार मिर उमराउ थरघर पुराना पुराना जाची घुंडा गौंडा मा राषनु. पुरुव पछिम्का षस वाहुन लाई दरबारमा पैठ् हुन नदिनु. क्यान भनौला बाहिडा मान्छ्याले दरबारमा विथिति गराउछन्.

राजाको हुकुम जफत गरि राषनु. मैले तिं थुम् का बह्रा उमराउलाई ईन्द्रवज्र तुल्याई राष्याथ्या. नगरा निसान पनि दिई राष्याथ्यां. बाह्रबिसको गांठो बाधी दियाको थीयो र सल्ल्यान् लिग्लीग् धादि का मुहुडा मा जाहाजहा काज पर्थ्यो फत्य गर्थ्या र यो अैस्वर्जे गऱ्याको हो.

तब राजाले ठुलो निंञा निसाफ हेर्नु. अन्याय मुलुकमा हुन नदिनु. निञानिसाप बिगार्न्या भन्याको घुस् दिन्या र घुस षान्या (हुन्). ईन दुईको ता धन जिव गरि लियाको पनि पाप छैन. ई राजाका महासतुर हुन्.

उप्रान्त ॥ जड कुरो राजालाई चाहीन्या सिपाहिहरूको घरषेत् मिलाईदिनु र म्लजल् गर्छन र दुवै बोटि भित्र हाल्न पाउछन् र कबिला को निर्फिक्रि हुन्छ. ढोका मा भया पनि गौडा मा भया पनि सिपाहिहरूको छाति बलियो रहन्छ. पजनि गर्दामा पनि सये

नाल का कम्पनी जमाउनु र सये नालका सुवेदार चार पांच लडाञीमा जस पाई आयाका यस्ता आफुले जाचि सुवेदार हाल्नु. सुवेदारले पनि सातपगरि दुई चार बाढ षायाका यस्ता सातपगरि... हाल्नु. सातपगरिले स्वह्न हुदा हाल्दा आफुसित मर्ने मार्न्य जाची १६ हुदा हाल्नु. १६ हुदाले पनि आफुसित मर्ने मार्न्य जाची सिपाही हालि आफ्ना आफ्ना पट्टि भर्ना गर्नु. पट्टी पट्टिमा सिपाहि पनि षस् मगर गुरुं ठकुरि इनै चार जात मात्रै षिचोला गरि हाल्नु र तर्वार पर्दा साह्रो हुन्छ ।

लुहा च्यापन्या पनि इनै चार जात मात्रै हुन् र तरबार पर्दा साह्रो हुन्छ र बैरि त क्या इन्द्र को आसन् पनि डगाईछ. हजारौ धना. हजारौ पथर्कला. हजारौ षुडा. हजारौ तोप भया इन्द्रको आसन पनि डगाईछ.

जयप्रकास मल्लका मतलप् लाई दषिन बाट नागा झिकाया र नेपालभित्र पस्न नदि सातगाउ भित्रैमा भिजाञा.

कास्मेरिषान् नवाफ् मकवानपुरमा चढ्यो र छअविस् षोडा ले काटि धर्काई सिवाना कटाई आञां. तिन् चार पल्टन् लिएर सिडुलि गढि मा हांडीसाहेव चढ्यो र वाहीं पनि काटि पथर्कला च्याति ल्याञा र लषनै बाट तिन मुसल्मा मेरो चाकरिलाई नुवाकोटमा पिछा परि आयाका थिया ... इनै बन्दुकको तुल कलायेत तिनै मुसरमानले जान्याको रहेछ र सेष जरवर ममतकि भेषासि तिनै जनालाई अजिटनी दियां तिलंगा सधायाको हो.

नेपालको किताप हेर्दा तुर्कीना मंग्रात् मुग्लाना हुन्या रहे छ र तुरकाना अघि भैगये छ. मगरात्को राजा मै हुं. मुग्लानाको दोस् मेट्नालाई आधा थुम मेटि कंपनी जमायाको हो. आधा षुडा आधा पथरकला बनायाको हो.

आफ्ना घरका पुराना सेवक जाची. हजूर मा हरोदम् राषी दरोबस्त बाधि घर बलियो राषनु. यस्व भया दरबार बलियो रहन्छ. राजाको चतुराई भया सिपाही रैति हात गरि राखनु. कसैका मलाजा पछि गुण पछी लाग्नु नदिनु. नुन् पछि लाउनु.

उप्रान्त ॥ टक्सार पनि चोषो चलाउनु. अदालथ मा पनि ठकुरि जाचि डिष्ठा राष्नु. मगर जाचि विचारि थाप्नु. कचहरि पिछे यक्यक् पण्डित राषी निञासास्त्र बमोजिम् अदालथ चलाउनु. अदालथका पैसा दरबारभित्र नहाल्नु... फकीर फकिडा

अतित जोगि सन्न्यासि ब्राह्मणहरू इनैलाई दक्षिणा भोजन चलाई दिनु. उप्रेका पैसा दक्षिणा चलाई धोती रुमाल चलाइदिनु. यस्व भया असत्यको दोस् लाग्दैन.

षानी भयाका ठाउमा गाउ भया पनि गाउ अरु जग्गामा सारिकन पनि षानि चलाउनु. गह्रो बन्या जग्गामा घर भया पनि घर अरु जग्गामा सारि कुलो काटि षेत बनाई आवाद गर्नु.

उप्रान्त ॥ कोही बेलामा हात दिना मा पस्या र मलाई झिकाया र पछाडि दगा दिया र महादुष गरि पछाडि सुद्ध गरि नेपाललाई मुर्चा लाञाथ्यां... सये नाल का कम्पनी ले छरितो हुन्छ र यस्व भया सये नालका कंपनिले हजार जवान्लाई भ्याउछ. किल्ला किल्लापिछे यक् यक् कम्पनी राषी गर्षा बाडिदिनु र जगेरा बांधी भरि राष्नु.

उप्रान्त ॥ मलाई यवटा कुराको संध्यह लागिरहेछ कुन् कुरो भन्या मुग्लाना नजिकै रहेछ. तेस् जग्गामा छोकडा पत्रीया रह्याछन्. चित्रकार भऱ्याको कोठामा ढोलक् सितार राग तान् मा भुल्नन्.

राग तान्मा बडो ठुलो मोहो हुन्छ र दवलथ पनि षोलिन्छ. देसको भेद पनि तिनेले लैजान्छन् र हरिपले दगा गर्छ. रागको अभ्यास पनि कसैले नगर्नु. तिन जात लाई पहाड आमफदरफ् पनि कसैले नषोलनु अथवा फागुलाई यक् दुई गरी झिकि चाढै विदा गराईदिनु र देसको भेद पनि पाउदैनन्.

आफ्ना स्वष सयेललाई ता सास्त्रबमोजिम् को तिनै सहर नेपाल को नेवार हरूको नाच झिकाई हेऱ्या पनि हुन्छ. ईनमा ता दियाको पनि आफ्नै देसमा रहंछ. यस्व भया आफ्नु देस गमन रहन्छ ॥ ॥ ॥ ॥ ॥ ॥